# लागुऔषध नियन्त्रण राष्ट्रिय नीति, २०६३

## १. पृष्ठभूमि :

लागुऔषधको दुर्व्यसन तथा अवैध ओसार-पसार बहुपक्षीय सरोकारको विषय हो । यो समस्या कुनै स्थान, मुलुक वा क्षेत्र विशेषको समस्या मात्र नभई विश्व मानव समुदायकै सामुहिक समस्याका रुपमा प्रकट हुदै आएको छ । विश्वका सवै जसो राष्ट्र यस समस्याबाट अछुतो रहन सकेका छैनन् । नेपालमा सन् १९६० को दशकको सुरुदेखि हिप्पी संस्कृतिको आगमनका साथै लागुऔषध दुर्व्यसनको समस्या जटिल हुदै गएको देखिन्छ ।

नेपालमा लागुऔषध प्रयोगकर्ताहरुको संख्या आजभन्दा १० वर्ष अगाडि नै पचासहजार नाघिसकेको अनुमान गरिएकोमा हालको अव्यवस्थित शहरीकरण, संगठित आपराधिक संजालको प्रभाव बृद्धि, तथाकथित आधुनिकीकरणको विस्तार आदिका कारणले हालका दिनमा यो संख्या निकै बढ्न गएको अनुमान गर्न सकिन्छ । काठमाडौं उपत्यका, पोखरा, धरान लगायतका शहरी क्षेत्र र खासगरी नेपाल-भारत सिमावर्ती शहरहरुमा यो समस्या बढ्दो मात्रामा रहेको पाइन्छ । खासगरी जोखिम समूहका युवायुवतीमा लागुऔषधको दुरुपयोग तथा दुर्व्यसनको प्रवृत्ति बढिरहेको पाइन्छ भने विगतमा गाँजा, चरेस र हेरोइनको सेवनमा सिमित रहेका लागुऔषध प्रयोगकर्ताहरुले सन १९९० को दशकको सुरुवात सँगै सुईको माध्यमबाट समेत लागुऔषध प्रयोग गर्न थालेको पाइन्छ । बहुऔषधीय प्रयोग र दुर्व्यसन गर्ने विधिमा आएको परिवर्तनका कारण लागुऔषध प्रयोगकर्ताहरु कुपोषण, रक्तअल्पता, हेपाटाइटिस, यौनजन्य रोग र एच.आई.भी. एड्स जस्ता खतरनाक रोगबाट संक्रमित हुने क्रम बढ्दैगएको छ । समग्रमा एच.आई.भी.को संक्रमणको अनुपात सुई प्रयोगकर्ताहरुमा बढी देखिएकाले उनीहरुद्वारा लागुऔषध प्रयोकर्ताहरुको समूह, आफ्नै परिवार र अन्य व्यक्तिहरुमा एच.आई.भी.को संक्रमण गर्ने संभावना बढेको छ ।

शहरी क्षेत्रका महिलाहरुमा समेत लागुऔषध दुर्व्यसनको समस्या बढिरहेको छ । दुर्व्यसनको लतमा फसेका महिलाले पारिवारिक र सामाजिक बहिष्कारको सामना गर्नुपर्ने

भएकोले उनीहरुले यस विषयमा कसैलाई पनि जानकारी गराउँदैनन् । अधिकांश महिला लागूऔषध प्रयोगकर्ताहरुले आफ्नो लतलाई निरन्तरता दिन देह व्यापार र लागुऔषधको कारोवारलाई आफ्नो आयको माध्यम बनाएको समेत पाइन्छ । त्यसैले महिला लागुऔषध प्रयोगकर्ता यौनकर्मीहरुमा एच.आई.भी.संक्रमण उल्लेखनीय रुपमा बढिरहेको विभिन्न अध्ययनले स्पस्ट गरेको छ । उपचार र पुनर्स्थापन लगायतका सेवा नगण्य रुपमा उपयोग गर्ने गरेकाले उनीहरुको विषयमा पर्याप्त सूचना र जानकारी प्राप्त गर्नमा कठिनाई देखिएको छ ।

सन् १९६० को दशकको उत्तरार्द्धसम्म लागुऔषध (Narcotics) को दुरुपयोग तथा ओसार-पसार केही अफिमजन्य खोकी औषधि र मनोद्दिपक औषधि (Psychotropic Medicines) मा मात्र सीमित रहेकोमा सन् १९९० को दशकको सुरुवातदेखि लागु तथा मनोद्दिपक औषधि (Narcotic and Psychotropic Medicine) को दुरुपयोग युवा युवतीमा बढ्दैगएको पाइन्छ । सजिलै उपलब्ध हुने, कम मूल्य पर्ने र लामो समयसम्म असर रहिरहने भएकोले लागुऔषधको दुर्व्यसन बढ्दै गएको देखिएको छ ।

अवैध गाँजा लगायतका खेती तथा लागुऔषधको ओसार-पसार र बेचविखन रोकथाम तथा नियन्त्रण गर्ने कानून कार्यान्वयन निकायहरु क्रियाशील रहेका भए तापनि यस समस्याको निराकरण हुन सकेको पाइन्न र समस्या झन्झन् जटिल हुदै गएको प्रतित हुन्छ । लागुऔषधको अवैध ओसार-पसारमा संलग्न संगठित गिरोहको गतिविधि सिमावर्ती क्षेत्रमा झन् बढ्दै गएको देखिन्छ । स्थानीय स्तरमा उपभोग हुने वा नेपाल हुदै अन्य मुलुकमा अवैध ओसार-पसार हुने हिरोइन स्थलमार्ग र हवाईमार्ग हुदै नेपालमा आउने गरेको पाइन्छ । अफीमको उत्पादन तथा ओसार-पसारको मुख्य केन्द्र मानिएको गोल्डेन ट्रांगल (Golden Triangle) र गोल्डेन क्रेसेन्ट (Golden Crescent) नजीक रहेको नेपालको भौगोलिक अवस्थितिका कारण पनि अन्तराष्ट्रिय संगठित गिरोह (Drug Mafia) ले अवैध कारोवारको पारवहन विन्दुका रुपमा नेपालको भूमिलाई प्रयोग गरिरहेका र भविष्यमा अझ बढी गर्नसक्ने सम्भावना प्रवल देखिन्छ ।

## २. नीतिको औचित्य

दुर्व्यसनको लतमा किशोर किशोरीको बढ्दो संलग्नता, बहु औषधीय प्रयोगमा बृद्धि, सूईबाट दुर्व्यसन गर्ने बढ्दो प्रवृत्ति एवं लागुऔषध प्रयोगकर्तामा बढ्दो एच.आई.भी.लगायतका यौनजन्य सँक्रमण र आपराधिक कृयाकलापमा भएको बृद्धिले समस्यालाई झन् गहन र जटिल तुल्याएको छ । यस मानवीय समस्याको निराकरण समयमै गर्न नसकिएमा राष्ट्रले उत्पादनशील र श्रृजनशील युवा जनशक्ति गुमाउनुका साथै आपराधिक क्रियाकलाप पनि बढ्नजाने भएकोले उपयुक्त उपायको खोजि तथा अवलम्बन गर्नुका साथै सामूहिक शक्ति निर्माण गर्नु आवश्यक भएको छ। यस प्रयोजनका निमित्त लागुऔषधको उत्पादन तथा ओसार-पसारको बदलिंदो स्वरुप तथा प्रवृत्तिलाई नियन्त्रण गर्न क्षेत्रीय तथा अन्तर्राष्ट्रिय महासन्धिको भावना अनुरुप कानूनको निर्माण तथा परिमार्जन गरी कानून कार्यान्वयनलाई अझ बढी सुदृढ, सक्षम र साधन सम्पन्न तुल्याउन अपरिहार्य भएको छ।

लागु पदार्थ नियन्त्रण राष्ट्रिय नीति, २०५२ को कार्यान्वयन भएको एक दशक वितिसकेको छ। उक्त नीतिले बढ्दो र जटील दुर्व्यसन समस्यालाई अपेक्षाकृत रुपमा निराकरण गर्न नसकेको, नेपालले अन्तर्राष्ट्रिय महासन्धिमा गरेका प्रतिबद्धतालाई कार्यान्वयन गर्ने प्रभावकारी राष्ट्रिय संयन्त्र समेत निर्माण गर्नुपर्ने एवं लागुऔषध प्रयोगकर्ताको मानव अधिकारको संरक्षण गर्दै हालका वर्षहरुमा लागुऔषधको प्रायोगमा देखापरेका विविधिकृत जटिलतालाई सम्बोधन गर्नसक्ने गरी मौजूदा नीतिमा समय सापेक्ष सुधार तथा परिमार्जन गर्नुपर्ने आवश्यकता सबै सम्बद्ध पक्षबाट महसूस गरिएको छ। यस स्थितिमा नयाँ समस्या तथा चुनौतीको निराकरण तथा आत्मसात गर्नुपर्ने आवश्यकता तथा प्रतिवद्धतालाई समेट्ने गरी मौजूदा लागुऔषध नियन्त्रण नीतिलाई स्पष्ट, पारदर्शी र व्यवहारिक एवं कार्यान्वयन योग्य बनाई सहकार्यात्मक सवलता प्रदान गर्न यसलाई परिष्कृत तथा परिमार्जित तुल्याउन वाञ्छनीय भएको छ।

## ३. नितिको दीर्घकालीन सोच (Vision)

प्रस्तुत नीतिको दीर्घकालीन शोचका रुपमा "लागुऔषध दुर्व्यसन रहित स्वस्थ र समुन्नत समाजको प्राप्ति" रहनेछ ।

## ४. नीतिको उद्देश्य

४.१ लागुऔषधको अवैध खेती, उत्पादन, ओसार-पसार र बेचविखनको रोकथाम तथा नियन्त्रण गरी यससँग सम्बन्धित अपराधमा कमी ल्याउने ।

४.२ जोखिम समूहमा लागुऔषध दुर्व्यसनको प्रयोग (Incidence of drug abuse) लाई न्यूनीकरण गर्ने ।

४.३ गुणस्तरीय, भरपर्दो एवं विश्वसनीय उपचार तथा पुनर्स्थापन सेवामा लागुऔषध प्रयोगकर्ताहरुको पहुँच बढाउने ।

४.४ दुर्व्यसनका कारण लागुऔषध प्रयोगकर्ता, उसको परिवार र समुदायमा एच.आई.भि., हेपाटाइटिस, यौनजन्य रोग जस्ता सक्रमणको जोखिमलाई नियन्त्रण र न्यूनीकरण गर्ने ।

४.५ लागुऔषधको रोकथाम तथा नियन्त्रणसँग प्रत्यक्ष एवं परोक्ष रुपमा सारोकारराख्ने अन्य नीतिहरु वीच तादात्म्यता कायम राख्ने ।

४.६ लागुऔषधको रोकथाम तथा नियन्त्रणको कार्यमा सहकार्य र साझेदारी सहितको व्यापक सहभागिता प्रवर्द्धन गर्ने ।

## ५. नीति ( Policy Strategies)

माथि उल्लेखित उद्देश्य प्राप्तिका लागि देहायबमोजिमका नीति अवलम्बन गरिने छन् :

## ५.१ आपूर्ति नियन्त्रण (**Supply Control**)

५.१.१ गाँजा तथा अफीमको अवैध खेती तथा उत्पादनमाथि रोक लगाई नियन्त्रण गरिनेछ ।

५.१.२ लागुऔषधको अवैध ओसार-पसार र विक्री वितरणलाई नियन्त्रण गरिनेछ।

५.१.३ लागुऔषको अवैध कारोवारमा संलग्न अन्तर्राष्ट्रिय गिरोहको संगठित सञ्जाल नष्ट गर्न अन्तरदेशीय, क्षेत्रीय र अन्तर्राष्ट्रिय स्तरमा सहयोग, समन्वय र सहकार्य गरिनेछ ।

५.१.४ संयुक्त राष्ट्र संघीय र क्षेत्रीय महासन्धीको अनुमोदन गर्दै तदनुकूल कार्यान्वयनको व्यवस्था गरिनेछ।

५.१.५ सार्क राष्ट्रका कानून कार्यान्वयन निकायहरु वीच सूचना आदानप्रदान र सिप दक्षता तथा प्रविधि हस्तान्तरण गरी सबल र सक्षम क्षेत्रीय सञ्जाल निर्माण गरिनेछ।

५.१.६ सीमावर्ती क्षेत्रमा हुने लागुऔषधको अवैध ओसार-पसारलाई रोक्न विभिन्न नियन्त्रणकारी उपाय अपनाइनेछ।

५.१.७. मानव संसाधनको विकास र कार्य विशिष्टिकरणमा जोड दिइनेछ।

५.१.८. लागुऔषध नियन्त्रण कानून कार्यान्वयनको क्षेत्रमा कार्यरत तथा सम्बद्ध निकायहरुको क्षमता सुदृढ गरी विस्तार समेत गरिनेछ।

५.१.९. स्वास्थ्योपचारमा प्रयोग हुने लागू तथा मनोद्दिपक औषधिहरु (Narcotic and Psychotropic Medicines) को उत्पादन,

आयात, ओसार-पसार र विक्री वितरणमा समन्वय, प्रभावकारी निरीक्षण, अनुगमन र मूल्याङ्कनको व्यवस्था मिलाइनेछ ।

## ५.२ माग घटाउ (**Demand Reduction**)

### ५.२.१ दुर्व्यसन रोकथाम (**Drug Abuse Prevention**)

क. जोखिममा परेका लक्षित समूहका लागि व्यापक एवं सघन रुपमा सवै क्षेत्रको सहभागिता जुटाई लागुऔषध दुर्व्यसन रोकथामको कार्यक्रम राष्ट्रिय अभियानका रुपमा संचालन गरिनेछ ।

ख. सवै प्रकारका कार्यक्रमको तर्जुमा र संचालनमा लैंगिक मूलप्रवाहीकरण गरिनेछ ।

ग. विद्यालयस्तरको पाठ्यक्रममा समावेश गरिएका लागुऔषध दुर्व्यसन रोकथाम तथा नियन्त्रणका विषयलाई अध्यावधिक गरिनेछ साथै शिक्षक शिक्षिकाहरुको तालिमको पाठ्यक्रममा पनि लागुऔषध नियन्त्रण सम्बन्धी विषय समावेस गरिनेछ ।

घ. लागुऔषध प्रयोगकर्ताहरुको प्रयोगको अवस्थाका आधारमा सेवन, दुरुपयोग र दुर्व्यसनका स्थिति पहिचान गरी रोकथामका उपयुक्त प्रविधि तथा विधिको उपयोग गरिने छ । साथै प्रयोगकर्ताका अभिभावकहरुलाई समेत यस विषयमा संबेदनशील र सचेत तुल्याउन विभिन्न सचेतनामूलक कार्यक्रम संचालन गरिनेछन् ।

### ५.२.२ उपचार तथा पुनर्स्थापन **(Treatment and Rehabilitation)**

क. गुणस्तरीय उपचार र पुनर्स्थापन सेवामा लैंगिक तथा अन्य कुनै भेदभव विना लागुऔषध प्रयोगकर्ताहरुको पहुँचलाई सहज तुल्याइनेछ ।

ख. पूर्व लागुऔषध प्रयोगकर्ताहरुलाई सामाजिक तथा पारिवारिक समावेशीकरणका लागि सीपमूलक तथा आय आर्जनका कार्यक्रम संचालन गरिनेछन् ।

ग. उपचार र पुनर्स्थापनको क्षेत्रमा शोधकार्यलाई प्रोत्साहन गरी प्रभावकारी र सफल विधिको पहिचान गरिनेछ ।

घ. गैरसरकारी संघसंस्थाबाट उपलब्ध भैरहेको उपचार तथा पुनर्स्थापन सेवालाई सरल, सुलभ, गुणस्तरीय र भरपर्दो बनाउन न्यूनतम मापदण्डको कार्यान्वयन, अनुगमन र मूल्याङ्कन प्रक्रियालाई प्रभावकारी तुल्याइनेछ ।

ङ. उपचार र पुनर्स्थापनको क्षेत्रमा उल्लेखनीय योगदान गर्ने संघसंस्था एवं व्यक्तिको पहिचान गरी प्रोत्साहन गरिनेछ ।

च. उपचार र पुनर्स्थापन पश्चात् लागुऔषध प्रयोगकर्तालाई समाजमा सम्मानित जीवनयापन गराउन समाजिक पुनरएकीकरण (Social Reintegration) का कार्यक्रम संचालन गरिनेछ ।

## ५.३. जोखिम न्यूनीकरण (Risk Reduction)

५.३.१ लागुऔषध प्रयोगकर्ताहरुमा देखिने आधारभूत स्वास्थ्य समस्याहरुको पहिचान गरी त्यस्ता जोखिमहरुबाट लागुऔषध प्रयोगकर्ता स्वयं, उसका परिवार, छरछिमेक र समुदायका अन्य व्यक्तिलाई जोगाउने कृयाकलापलाई बढावा दिइनेछ ।

५.३.२ लागुऔषध प्रयोगकर्तामा बढ्दैगएको एच.आई.भि. लागायतका संक्रमणलाई रोकथाम एवं न्यूनीकरणका उपाय अवलम्बन गरिनेछ ।

## ५.४ शोध र विकास (**Research and Development**)

५.४.१ लागुऔषध नियन्त्रण र रोकथामका क्षेत्रमा देखिएका समसामयिक महत्वका विषयमा अध्ययन, अनुसन्धान तथा विकासका कार्यलाई प्रोत्साहन गरिनेछ ।

५.४.२ नेपालमा लागुऔषध दुर्व्यसनको स्वरुप, प्रवृत्ति, व्यापकता, किसिम एवं संख्या तथा नतिजा र परिणाम आदिको तथ्यगत आधिकारिक जानकारी प्राप्त गर्नका लागि आवधिक सर्बेक्षणको प्रकृयाको थालनी गरिनेछ ।

## ५.५ सहकार्य, साझेदारी र श्रोत परिचालन (**Collaboration, Partenership and resource Mobilization**)

५.५.१ स्थानीय श्रोतको परिचालन गरी लागुऔषध दुर्व्यसन रोकथाम तथा नियन्त्रणका क्षेत्रमा संचालन हुने कार्यक्रमलाई दिगो तुल्याइनेछ ।

५.५.२ निजी तथा सामुदायिक संघसंस्थाको श्रोत परिचालन गर्न सरकारी र नजी/सामुदायिक/व्यवसायिक/गैरसरकारी/स्थानीय निकायका बीच साझेदारी र सहकार्यलाई प्रोत्साहन गरिनेछ ।

५.५.३ अन्तर्राष्ट्रिय संघसंस्थाको सहयोग र सहभागितालाई मुलुकको प्राथमिकता तर्फ उन्मुख गराउन प्रोत्साहित गरी श्रोत परिचालन गरिनेछ ।

५.५.४ अन्तर्राष्ट्रिय स्तरमा कार्यरत संजालसँग समन्वय तथा सामन्जस्य कायम गरी राष्ट्रिय तथा स्थानीयस्तरमा संजालको विकास गरिनेछ ।

५.५.५ लागुऔषधको आपूर्ति तथा दुर्व्यसन नियन्त्रणका लागि सरकारी/निजी क्षेत्र/धार्मिक क्षेत्र/शैक्षिक क्षेत्र/नागरिक समाज/स्थानीय निकाय वीचको साझेदारी प्रवर्द्धन गरी सहभागिता र सहकार्यलाई व्यापक तुल्याइनेछ ।

## ६. संस्थागत व्यवस्था

६.१. लागू आषध नियन्त्रण कार्यलाई सक्षम र प्रभावकारी तुल्याउन मार्गदर्शन प्रदान गर्न, समन्वय र सामन्जस्य कायम गर्न तथा अनुगमन र मूल्याङ्कन गर्न एक उच्च स्तरीय लागुऔषध नियन्त्रण राष्ट्रिय निर्देशन तथा समन्वय समिति रहनेछ । उक्त समितिको स्वरुप देहाय बमोजिम हुनेछ :

| | | |
|---|---|---|
| १. | माननीय गृह मन्त्री | अध्यक्ष |
| २. | सचिव, गृह मन्त्रालय | सदस्य |
| ३ | सचिव, अर्थ मन्त्रालय | सदस्य |

| | | |
|---|---|---|
| ४. | सचिव, परराष्ट्र मन्त्रालय | सदस्य |
| ५. | सचिव, सूचना तथा सञ्चार मन्त्रालय | सदस्य |
| ६. | सचिव, शिक्षा तथा खेलकुद मन्त्रालय | सदस्य |
| ७. | सचिव, महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय | सदस्य |
| ८. | सचिव, स्वास्थ्य तथा जनसंख्या मन्त्रालय | सदस्य |
| ९. | सचिव, कानून, न्याय तथा संसदीय व्यवस्था मन्त्रालय | सदस्य |
| १० | सचिव, राष्ट्रिय योजना आयोगको सचिवालय | सदस्य |
| ११. | प्रहरी महानिरीक्षक, प्रहरी प्रधान कार्यालय | सदस्य |
| १२. | प्रमुख, राष्ट्रिय अनुसन्धान विभाग | सदस्य |
| १३. | प्रतिनिधि, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्था ८ जना (कम्तीमा तीन जना महिला प्रतिनिधि रहने गरी) | सदस्य |
| १४. | मुख्य लागुऔषध नियन्त्रण अधिकारी | सदस्य-सचिव |

६.२ लागुऔषध **नियन्त्रण** सम्बन्धी कार्यक्रमको कार्यान्वयनलाई प्रभावकारी समन्वय र सामन्जस्यता कायम गराई कृयाकलापको अनुगमन तथा मूल्याङ्कन गरी कार्यान्वयन स्तरका समस्याको समाधान तथा निराकरण गर्ने जिम्मेवारी वहन गर्ने गरी देहायको लागुऔषध नियन्त्रण कार्यकारी समिति रहनेछ :

| | | |
|---|---|---|
| १. | सचिव, गृह मन्त्रालय | संयोजक |
| २ | सह-सचिव, शिक्षा तथा खेलकुद मन्त्रालय | सदस्य |
| ३. | सह-सचिव, महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय | सदस्य |
| ४. | सह-सचिव, कानून न्याय तथा संसदीय व्यवस्था मन्त्रालय | सदस्य |
| ५. | महानिर्देशक, भन्सार विभाग | सदस्य |
| ६. | निर्देशक,औषधी व्यवस्था विभाग | सदस्य |
| ७. | निर्देशक, राष्ट्रिय एड्स तथा यौन रोग नियन्त्रण केन्द्र | सदस्य |
| ८. | प्रहरी नायव महानिरीक्षक, प्रहरी प्रधान कार्यालय | सदस्य |
| ९. | प्रतिनिधि, नेपाल प्रत्रकार महासंघ | सदस्य |
| १० | प्रतिनिधि, गैर सरकारी संस्था -३ जना (कम्तिमा १ जना महिला प्रतिनिधि हुनेगरी) | सदस्य |
| ११. | मुख्य लागुऔषध नियन्त्रण अधिकारी | सदस्य-सचिव |

६.३ लागुऔषध रोकथाम तथा नियन्त्रणको क्षेत्रमा व्यापक स्तरमा सचेतना र जागरणका कार्यक्रम संचालन गराउन, उपचारात्मक तथा मानवीय सेवाको गुणस्तरीय प्रवाह गराउन, आवश्यक मानव संसाधनको विकास गर्न, व्यापक सहभागितात्मक र स्वायत्त संस्थाका रुपमा "राष्ट्रिय लागुऔषध माग घटाउ अभियान (National Drug Demand Reduction Campaign)" को व्यवस्था गरिनेछ ।

६.४. हालको लागुऔषध नियन्त्रण कानून कार्यान्वयन इकाईको मौजुदा स्वरुप र क्षमतालाई समय सापेक्ष रुपमा सुदृढ र सक्षम तुल्याई यसलाई विशेशिकृत संयन्त्रका रुपमा नेपाल सरकार गृह मन्त्रालय अन्तर्गत "लागुऔषध नियन्त्रण ब्यूरो (Narcotics Control Bureau)" स्थापना गरिनेछ । साथै यस ब्यूरोमा विशेष कार्यटोलीमा संलग्न हुने नेपाल प्रहरीका कर्मचारीहरुको विशिष्टीकृत सेवा संचालन गर्ने व्यवस्था मिलाइनेछ ।

## ७. कानूनी व्यवस्था: ( Legislation)

संयुक्त राष्ट्र संघ र क्षेत्रीय महासन्धि तथा राष्ट्र संघको महासभा र अन्य सम्मेलनमा लागुऔषधको रोकथाम तथा नियन्त्रणका लागि मुलुकले गरेको प्रतिबद्धता तथा ती संयन्त्रको भावना अनुरुप कानूनलाई प्रयाप्त, कठोर, मानवीय दृष्टिले उपयुक्त तथा कार्यान्वयन योग्य तुल्याउन विद्यमान लागुऔषध नियन्त्रण कानूनमा सुधार गरिनेछ । साथै उक्त कानूनलाई प्रभावकारी तुल्याउन मुद्रा निर्मलीकरण, साक्षी संरक्षण र सहायक रसायन जस्ता विषयमा समेत आवश्यक कानून निर्माण गरिनेछ ।

## ८ . नीतिगत सुधार तथा संशोधन (Policy Reforms)

लागुऔषध दुर्व्यसन र यसको अवैध उत्पादन, ओसार-पसारको कृयाकलाप, स्वरुप, व्यापकता र परिणाम आदिको गतिशीलता एवं समय सापेक्ष सुधारको आवश्यकतालाई दृष्टिगत गरी नीतिलाई समय सापेक्ष र समावेशी तुल्याउन प्रत्येक ५ वर्षमा नीतिको पुनरावलोकन गरी आवश्यक सुधार गरिनेछ ।

## ९. नीतिको कार्यान्वयन व्यवस्था

९.१ नीतिको कार्यान्वयनका लागि सम्बद्ध सबै पक्षसँग समन्वय र सामन्जस्य कायम गरी आवश्यक विषयगत तथा क्षेत्रगत रणनीति (Sectoral and Thematic Strategy) तथा कार्य योजना (Plan of Action) तर्जुमा गरिनेछ ।

९.२ यस नीतिको कार्यान्वयनका लागि जिम्मेवार निकायहरुले आ-आफ्नो वार्षिक कार्यक्रम तथा बजेट तर्जुमा गर्नेछन् ।

९.३ लागु पदार्थको दुर्व्यसन रोकथाम तथा नियन्त्रणको विषय सर्वसम्बन्धित (Cross Cutting) भएकाले विभिन्न कार्यनीति तथा कार्यक्रम पद्धतिमा यस विषयलाई मूलप्रावाहीकरण (Mainstreaming) गरिनेछ ।

९.४ मित्रराष्ट्र भारत सँगको द्विपक्षीय सम्बन्ध तथा अन्तर सीमासम्बन्धी विभिन्न अभ्यासमा यस विषयलाई प्राथमिकता दिइनेछ ।

**१०. खारेज हुने :** लागु पदार्थ नियन्त्रण राष्ट्रिय नीति, २०५२ खारेज हुनेछ ।